


श्री विक्रम संवत् १९४६ देखि अविछिन्न प्रकाशित, नेपाल पञ्चाङ्ग निर्णायक समितिबाट स्वीकृत
नेपालको पहिलो आधिकारिक सर्वाधिक विषयले सुसज्जित राष्ट्रिय पञ्चाङ्ग




श्री शालिवाहनीय शाके १९४६

नेपाल संवत् ११४४-११४५

2024-2025 A.D.



राजा मंगलः

कलेर्गताब्दाः ५१२५

सृष्टितोगताब्दाः १,९५,५८,८५,१२५

कालयुक्तनामसंवत्सरः ५२



मन्त्री शनिः

ज्योतिषी पण्डित श्री तोयनाथ पन्तद्वारा स्थापित

# तोयनाथ पञ्चाङ्ग २०८१


चतुर्भुज प्रकाशनका लागि सूर्यनाथ पन्तद्वारा सम्पादित तथा प्रकाशित



सम्पर्क फोन नं. ९८४१ ४४७७११, पत्राचारः pantsuryanath53@gmail.com



मूल्य रु. १५१।-

# तोयनाथ पञ्चाङ्ग



संस्थापकः
ज्यो.पं.श्री तोयनाथ पन्त
वि.सं. १९००-१९७५

संवर्द्धकः
ज्यो.पं.श्री पुष्कलनाथ पन्त
वि.सं. १९४८-१९९०

संरक्षकः
ज्यो.पं.श्री सत्यनाथ पन्त
वि.सं. १९८०-२०४८

संयोजकः
श्री प्रेमनाथ पन्त

सम्पादकः
सूर्यनाथ पन्त

पञ्चाङ्ग गणनाकारः
श्रीधरनाथ पन्त

सम्पादन सहयोगीः
सर्वज्ञनाथ पन्त  संज्ञा पन्त

सल्लाहकार :
पूर्णानन्द ओझा
(दर्शनाचार्य, ज्योतिषाचार्य)

बजार व्यवस्थापकः
गुरु पुस्तक विक्रेता
भोटाहिटी, काठमाडौं
फोन: ४३३१२८२, ९८५११८११२५

CHATURBHUJ PRAKASHAN
चतुर्भुज प्रकाशन

प्रकाशक तथा वितरकः
चतुर्भुज प्रकाशन
क्षेत्रपाटी, काठमाडौं, नेपाल
फोन: ०१ ४२६३१३१
इमेल: chaturbhuj.prakashan@gmail.com

नेपाल सरकार
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय

# नेपाल पञ्चाङ्ग निर्णायक विकास समिति

काठमाडौं, नेपाल, फोन नं. ४५१९०१३

## स्वीकृति र शुभकामना

नेपाली संस्कृति, परम्परा, चाडपर्व, व्रत, उत्सव, जात्रा आदि समस्त धार्मिक एवं सामाजिक कृत्यको धार्मिक कार्यतालिका मूल स्वरुप पञ्चाङ्ग (पात्रो) हो। पञ्चाङ्गमा समावेश गरिने धार्मिक एवं सामाजिक कृत्यहरूको मूल आधार भने पञ्चाङ्ग ग्रहहरूको स्पष्ट, उदय/अस्त, बक्री/मार्गी आदि हुन। पञ्चाङ्गमा समावेश गरिने यी विषयहरू ग्रहगणितद्वारा निर्धारण गरिन्छन्। यसरी निर्धारण गरिएको तिथि नक्षत्रादिको आधारमा श्रुति, स्मृति, पुराण, तन्त्र, धर्मशास्त्र, देशाचार, कुलाचार विभिन्न सम्प्रदायको आ-आफ्नै परम्पराको आधारमा व्रत-पर्व, उत्सव आदिको तिथि-मिति निर्धारण गरिन्छ।

उक्त सन्दर्भमा अनुभवी एवं दक्ष गणकहरूद्वारा ग्रहगणितका मूल सिद्धान्तका आधारमा छुट्टा छुट्टै गणना गरिएको ग्रहस्थिति, पञ्चाङ्ग र ग्रहण आदिमा एकरुपता कायमगरी तयार गरिएको पञ्चाङ्गका आधारमा आमन्त्रित धर्मशास्त्रका विशिष्ट विद्वान सिद्धान्त-फलित ज्योतिष विशेषज्ञ, विशिष्ट विद्वान्हरूको राय सुझाव अनुसार तयार गरिएको वि.सं. २०८१ सालको पञ्चाङ्ग प्रकाशन गर्ने **"तोयनाथ पञ्चाङ्ग"** पञ्चाङ्गकार ज्यो. **सूर्यनाथ पन्तलाई** स्वीकृत प्रदान गरिएको छ।

यो पञ्चाङ्ग निर्माणगर्ने सत्कार्यमा सहभागीहुने विद्वानहरूमा आमन्त्रित ज्योतिविद् एवं धर्मशास्त्रज्ञ विद्वानहरूका अतिरिक्त समितिका अध्यक्ष प्रा. श्रीकृष्ण अधिकारी, सदस्यहरूमा प्रा. डा. देवमणि भट्टराई, डा. बासुदेवकृष्ण शास्त्री (कोइराला), श्रीमती तनुजा दाहाल, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका प्रतिनिधि उप-सचिव श्री शिवराज रेग्मी र सदस्य-सचिव/कार्यकारी निर्देशक ज्यो.पं. सूर्यप्रसाद ढुङ्गेल हुनुहुन्छ। यस्तै पञ्चाङ्ग गणना गरी तयार गर्ने पञ्चाङ्गकारहरू मध्येका ज्योतिषी **सूर्यनाथ पन्त**, ज्यो.पं. विश्वराम शर्मा (सापकोटा), श्री मुरारीराज पाण्डे, डा. विश्वनाथ त्रिपाठी, ज्यो. डिल्लीराज जोशी, ज्यो.पं. दिव्यपुरुष ढकाल, ज्यो. सुवोध ढुङ्गेल, डा. लोकराज पौडेल, ज्यो. शशिधर जोशी, ज्यो. दामोदर जोशी, श्रीकेश कौशिक, दैवज्ञ कीर्तिकिरण जोशी, दैवज्ञ सिद्धिलक्ष्मी व्यञ्जनकार, ज्यो.पं. चेतराज उपाध्याय र ज्यो.प. नारायणप्रसाद नेपाल हुनुहुन्छ।

नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिद्वारा स्वीकृत पात्रो प्रयोग गर्न समस्त पाठक वर्गमा हार्दिक अनुरोध गरिन्छ। यस समितिबाट स्वीकृत प्राप्त नगरेका पात्राहरूमा उल्लेखित तिथि, नक्षत्र, चाडपर्व आदिका विषयमा यो समिति जवाफदेही हुने छैन। नेपाल पञ्चाङ्ग निर्णायक विकास समिति निर्देशित तथा स्वीकृतिप्राप्त पञ्चाङ्गलाई अझ बढी शास्त्रीय र मर्यादित बनाउन सकारात्मक सुझावकोलागि समस्त विज्ञज्जनमा हार्दिक अनुरोध गरिन्छ।

अन्त्यमा, वि. सं. २०८१ सालको नववर्षारम्भको शुभोपलक्ष्यमा देश-विदेशमा रहनुहुने समस्त नेपाली दाजुभाइ एवं दिदीबहिनीहरूमा यो समिति हार्दिक मङ्गलमय शुभकामना समेत व्यक्त गर्दछ।

२०८०।१०।२

**प्रा. श्रीकृष्ण अधिकारी** (अध्यक्ष)

**ज्यो** ति स्वरुप गणितज्ञ महत्व सिद्ध
**पं** चा मृतै सरह नैष्ठिकता प्रबुद्ध
**स्व** र्णा क्षरै छ जसको इतिहास शुद्ध
**श्री** युक्त पन्त कुलका बहुतै प्रसिद्ध
**तो** यै समान गुणले परिपूर्ण धन्य
**य** स्ता सुयोग्य मतिको महिमा अनन्य
**ना** ना पुराण सब शास्त्रहरू पढेर
**थ** प्दा बयान सकिँदैन कतै भनेर
**पं** त प्रसिद्ध कुलदीपक तोयनाथ
**त** द् वंश पुत्र पनि पुष्कलनाथ साथ
**को** थे सदा गणित सत्य र प्रेमनाथ
**प** ञ्चाङ्ग पूर्ण अब गर्दछ सूर्यनाथ
**चां** जो मिलाउनु छ थाम्न परम्परामा
**ग** र्छु निवेदन भूले जतिको कुरामा

भरतराज पन्त, साहित्याचार्य

## प्रकाशकीय

सर्वाधिक महानुभावहरूको अपार समर्थनबाट अभिप्रेरित भएर समाजमा उपयोगी विषयसहित प्रस्तुत गर्ने सिलसिला जारी छ। देश-काल र परिस्थिति अनुसार यस वर्षको बजारभाउमा अत्याधिक वृद्धिसंगै यसको उत्पादन लागतमा पनि धेरै वृद्धि हुन पुग्यो। तर हामीले सर्वसाधारणलाई धेरै बोझ हुन दिएका छैनौं, बाध्यतालाई स्वीकार गरी विगतमा झैं यस वर्ष पनि सबैको सद्भाव र सहयोगको आशा राखेका छौं।

पञ्चाङ्ग निर्माणमा प्रशस्तै परिश्रम पर्ने हुँदा आधिकारिक पञ्चाङ्गकारलाई थाहै नदिई आधिकारिक पञ्चाङ्गबाट अनाधिकृतरूपमा गरिने व्यावसायगत कार्यको नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिले सरोकारवाला सबैलाई नीति-नियममा राख्दा राम्रो हुनेछ। व्यवसाय प्रवर्धन गर्ने उद्देश्यले प्रकाशित हुने पञ्चाङ्ग (पात्रो), क्यालेण्डर आदिको नियन्त्रण नेपाल सरकारले प्रदान गरेको आदेश अनुसार नियम उल्लङ्घन गरेको देखिएकामा त्यस्ता कार्यलाई निरुत्साहित गर्नु पर्नेमा बरु प्रोत्साहन गरिएको देखिन्छ, यस विषयमा सरोकारवालाको ध्यान जान जरुरी छ।

नेपाल सरकार समक्ष अनुरोध गर्दछु कि, नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिले पञ्चाङ्ग/क्यालेण्डर प्रकाशनार्थ स्वीकृति गर्दा नेपाल सरकारले निर्णय गर्ने छुट्टीको सूची आएपछि मात्र सरोकारवाला सबैलाई अनुमति दिंदा समितिको औचित्यको कदर हुन जाला।

यस पञ्चाङ्गलाई लोकप्रिय बनाउनुहुने समस्त आदरणीय जनमानसमा धन्यवाद टक्र्याउँदै, विगतवर्षहरूमा जस्तै प्राप्त सद्भाव कायमै हुनेछ भन्ने अभिलाषा एवं अटल विश्वासका साथ नववर्ष २०८१ ले हामी सबैलाई उत्साह, उमङ्ग, खुसी र चिरशान्ति कायम गरोस् भनी हार्दिक शुभकामना व्यक्त गर्दछौं।

२०८०-१०-७
सूर्यनाथ पन्त
सम्पादक-प्रकाशक

## यस पञ्चाङ्गका विक्रेताहरु

| विक्रेता | फोन |
|---|---|
| सुकुन्दा पुस्तक भवन भोटाहिटी, काठमाडौं | ४२२०३७९ |
| एम. के. पब्लिशर्स भोटाहिटी, काठमाडौं | ४२४९८३६ |
| हेरिटेज पब्लिशर्स/डिस्ट्रिब्यूटर्स भोटाहिटी | ४२२१२९१ |
| वज्रवाराही बुक सप्लायर्स भोटाहिटी | ४२२८५६३ |
| सब-वे पुस्तक/पोस्टर भण्डार भोटाहिटी | ४२३०१९० |
| लक्ष्मी दिदी भोटाहिटी, काठमाडौं | ९८०८६४३४३४ |
| दुर्गा न्यूज/बुक्स डिस्ट्रिब्यूटर्स भुगोलपार्क | ४२४४०९२ |
| बालकृष्ण बुक्स सेन्टर नयाँसडक, काठमाडौं | ९८४९१४९८८२ |
| एलाईड न्यूजपेपर डिष्टिब्यूटर्स नरदेवी | ४२६१९४८ |
| यज्ञराज न्यौपाने वागवजार, काठमाडौं | ९८४११८४७४५ |
| पशुपति पूजा सामग्री भण्डार काठमाडौं | ९८५१०५८०४० |
| गोपीकृष्ण चौलागाई मङ्गलवजार, ललितपुर | ९८४११८४७४५ |
| राम न्यूजपेपर सप्लायर्स कोपुण्डोल, ललितपुर | २१२३३५२ |
| वच्चन ध्वज जोशी भक्तपुर | ९८४१२१३५२२ |
| जयकाली प्रकाशन प्रा. लि. काठमाडौ | ९८६९७२७८१५ |

उपत्यका बाहिर:

| विक्रेता | फोन |
|---|---|
| शरण उत्सुक त्रिशूलि, नुवाकोट | ९८५१००२९३८ |
| प्रशंसा बुक्स एण्ड स्टेशनरी नुवाकोट | ०१०५६१२०९ |
| प्रगति पुस्तक पसल विर्तामोड, झापा | ०२३ ५४४६३८ |
| न्यू मनकामना पुस्तक पसल धरान | ९८५२०४९९१३ |
| श्याम पुस्तक भण्डार विराटनगर | ०२१-५२६३४५ |
| सत्यनारायण मन्दिर विराटनगर | ९८४२२२७२७० |
| अखिलेस्वर पुस्तक पसल लालबन्दी, सर्लाही | ९८४४२८७८७८ |
| काभ्रे भगवती पुस्तक पसल सिन्धुली | ९८४४०४१९८२ |
| अर्चना राज इन्टरप्राइजेज लहान | ९८५२८३०५५५ |
| जानकी पुस्तक भण्डार जनकपुरधाम | ५२००९२ |
| लक्ष्मी पुस्तक भण्डार ढल्केवर | ९८१४८५९३७८ |
| झिगु समाचार पुस्तक केन्द्र बीरगञ्ज | ५२८९१८ |
| श्री समाचार केन्द्र हेटौंडा, मकवानपुर | ९८४५४००१७२ |
| नारायणी पुस्तक सदन नारायणगढ | ५२१२८० |
| बैदिक पूजा सामाग्री भण्डार नारायणगढ | ९८५५०६३२४७ |
| भट्टराई पूजा पसल पोखरा | ९८४६०५८४५३ |
| श्रेष्ठ न्यूज एजेन्सी तानसेन, पाल्पा | ५२०१८२ |
| नेपाल बुक्स बुटवल | ९८५७०३१४३७ |
| दुर्गा पुस्तक-पूजा सामाग्री भण्डार बुटवल | ९८४२०८०४१९ |
| माछापुच्छ्रे बुक्स एण्ड स्टेशनरी नेपालगञ्ज | ५३६७४५ |
| न्यौपाने बुक्स डस्ट्रिब्यूटर्स कटारी | ९८५२८३६३५३ |
| मञ्जुश्री इन्टरप्राइजेज कोहलपुर, बाँके | ९८५८०२०९३६ |
| मल्टी ट्रेडर्स लम्की | ९८४८४४२२६३ |
| हाम्रो पुस्तक पसल सुर्खेत | ९८५८०५०१२२ |
| अल्फा स्टेशनरी सेन्टर सुर्खेत | ९८५८०५११६२ |
| आर्यन पुस्तक पसल सुर्खेत | ९८५८०५०५८४ |
| नवीन बुक्स सुर्खेत | ९८५८०५११०३ |
| श्री केदारपुस्तक एण्ड सप्लायर्स दिपायल | ९८४८४५३२२५ |
| लक्ष्मीभक्त/रामजी श्रेष्ठ डोटी, सिलगढी | ४२००२८ |
| चनैराज पुस्तक पसल बैतडी | ९७५९५००६७६ |
| लक्ष्मी यम स्टेशनरी खोड्पे (बैतडी) | ९८४८७४९८७ |
| समैजी पुस्तक भण्डार डडेलधुरा | ९८५८७५११४९ |
| नेपाल कपि उद्योग अतरीया-कैलाली | ९८५८७५१४८४ |
| हाम्रो पुस्तक पसल अत्तरिया, कैलाली | ९८४८४२३५४४ |
| नेगी ट्रेड एण्ड सप्लायर्स धनगढी | ९८४८४२५५६० |
| न्यू मिश्रा बुक्स धनगढी, कैलाली | ९८५८४२१५०९ |
| श्री मिश्रा ब्रदर्स धनगढी, कैलाली | ९८४८४५०००० |
| चौधरी बुक डिपो धनगढी, कैलाली | ०९१ ५२१२५० |
| पवन पुस्तक पसल धनगढी, कैलाली | ०९१ ५२३४०० |
| दीपज्योति ट्रेड सप्लायर्स(मल्टीट्रेडर्स) कैलाली | ९८५८७५१३३८ |
| चौलानी पुस्तक भण्डार प्रा.लि., धनगढी | ०९१ ५२७२६१ |
| गलैनाथ पुस्तक पसल, धनगढी | ९८४८८३६२४४ |
| ज्योति बुक्स टीकापुर | ९८५८४२१५२० |
| प्रतिक बुक्स टीकापुर | ९८४८४२१३१८ |
| दुर्गा पुस्तक भण्डार कञ्चनपुर | ५२१४६८ |
| चौलानी पुस्तक भण्डार प्रा.लि. महेन्द्रनगर | ५२४०६८ |
| सरस्वती पुस्तक पसल महेन्द्रनगर | ९८४८७२१७१८ |
| न्यू महारुद्र पुस्तक भण्डार महेन्द्रनगर | ५२५३६७ |

साथै देशैभरका पुस्तक तथा पत्र-पत्रिका पसलहरु

धर्मै कर्मै सबै छ विधिविधान पात्रो छ सर्वाङ्गको ।
धन्यै तोयनाथ पन्त कुलको दियौ र पञ्चाङ्ग यो ।।
आए जस्ता जतिसुकै वाधाहरू गर्दै जानु सामना ।
सुन्दरपश्चिम र स्वयं मेरो पनि छ शुभकामना ।।

**शुभचिन्तक: नरेश अवस्थी**

के.आई.सिंह गाउपालिका-४, चल्केसैन, डोटी, सुदुरपश्चिम

## विषय सूची

सम्पादकीय

पञ्चाङ्गको मुख्य उद्देश्य विविध धर्म संस्कृतिको रीतिरिवाज अनुसार मनाउनुपर्ने चाडवाडमा व्रत, पर्व, उत्सवको जानकारी गराउनु हो । चाडपर्व निर्धारण गर्ने मूल विषय भनेको तिथि नक्षत्रादिको भोग्य समयको आधार हो । भोग्य समयको तत्थाङ्क विभिन्न पद्धतिहरू अपनाई सूत्रबद्ध ढङ्गले गणितीय आधारमा तिथि, वार, नक्षत्र, योग, करणले भोग्ने अवधिको मापन घडी पला तथा आधुनिक घडिको समयमा अनुवाद गरी घण्टा, मिनेट, सेकेण्ड आदि प्रणालीमा हासिल गरिन्छ । यिनै पाँच अङ्को सिलसिलावद्ध प्रस्तुतिको स्वरुपलाई पञ्चाङ्ग भन्ने गरिन्छ ।

नेपाली पञ्चाङ्गको इतिहासमा श्री विक्रम संवत् १९४६ साल देखि अनवरतरूपमा प्रकाशित भइरहने क्रममा २०४६ सालमा शतवार्षिकी पूरा गरेको उपलक्ष्यमा पञ्चाङ्गको भोग्यकाल घडी पलाको मापन सामान्यरूपमा वुझ्न कठिन हुने हुदाँ, विकल्पमा आधुनिक घडीको समयमा रुपान्तरण गरी घण्टा मिनेटमा राख्ने परम्पराको थालनी यसै पञ्चाङ्गबाट शुभारम्भ भएकोमा कारणबस् केहीवर्ष अवरुद्ध भए तापनि २०६४ सालदेखि उक्त परम्परलाई पुन: निरन्तरता दिने प्रयास गरिएको थियो । तिथि, नक्षत्र, योग, पूर्वाद्ध-उत्तरार्द्ध करण, चन्द्रराशि एवं ग्रहले भोग्ने अवधिको मापनलाई बजेमा राखिएको छ । अब देखि दिनमानको भोग्यकाललाई पनि घण्टा मिनेटमा समावेश गरेको छ ।

भद्रा, द्विपुष्कर, त्रिपुष्कर र धनिष्ठा पञ्चक आदिको मान्यावधिलाई पूर्ववत् दिदै आएको घडी पलालाई विश्राम दिई घण्टा मिनेटको बजेसम्ममा राखिएको छ ।

ग्रहहरूले भोग्ने अवधिको समयलाई “ग्रह सञ्चार बजेदेखि” नामकरण गरी राखिएको छ । तसर्थ सवै अङ्को यस वर्षदेखि घण्टा मिनेट (बजे)मात्र राख्दा पात्रोको आकृति पनि आकर्षक तथा छरितो बनाउने प्रयत्न गरिएको छ । यसरी एक्कासी घडीपलालाई समयमा मात्रै हेर्दा सुरुमा असहज होला । यसका लागि क्षमा माग्दै अब पुरानो शैलीलाई अवलम्बन गर्दै नयाँ तौरतरिका अनुसार बदलिन पनि सबैमा विशेष अनुरोध गर्दछौं । यसबाट आधुनिक प्रविधिसँग जोडेरं अझ परिष्कृत

र सूक्ष्मढङ्गको गणनाको परिणतिले सही र शुद्ध समयको आँकलन गर्न सकिन्छ ।

अझ बढी सरल बनाउने उद्देश्यले मुख्य अङ्गसंगै दैनिक ग्रहस्पष्ट, लग्नको समय तालिका एकै ठाउंमा राखेर प्रस्तुत गर्ने प्रयास गरिएको छ । यसबाट कुनै पनि दिनको दैनिक सूर्योदय समयको ग्रहस्पष्ट र दैनिक बाह्रै लग्नको समय तालिका हेर्न मिल्दछ । सथसाथै सूर्य-चन्द्र, नक्षत्र, संक्रान्तिफलसहित वार्षिक राशिफल, मासिक फलादेश, दैनिक ग्रहस्पष्ट तथा दैनिक लग्नतालिका पर्ना पनि समावेश भएको छ । विगतदेखि दिइदै आएका वर्षभरिका केही प्रमुख चाडपर्व लगायत केही महत्वपूर्ण वैदिक मन्त्रहरू तथा पूजाविधि पनि विवरणसहित यस पञ्चाङ्गमा प्रस्तुत गर्ने जमर्को गरिएको छ ।

''पञ्चाङ्गको भोग्यकाल समाप्तिमा हुन्छ भने  
ग्रहको भोग्यकाल चाँहि आरम्भकालीन हुन्छ''

भद्राको समयमा कुनै पनि साइत नजुर्ने हुँदा यसलाई साथै द्विपुष्कर, त्रिपुष्कर र धनिष्ठा पञ्चक परेको बेलामा जन्म वा मरण भएमा त्यस वर्षमा उक्त वंशमा द्विपुष्करमा २, त्रिपुष्करमा ३ र धनिष्ठा पञ्चकमा पाँच नै जे भएको छ, त्यही हुन्छ भन्ने शास्त्रोक्ति अनुसार द्विपुष्कर, त्रिपुष्कर र धनिष्ठा पञ्चक कुन दिन कुन समयमा पर्छ भन्ने हेतुले यसलाई पनि महत्वकासाथ संलग्न गरिएको हो ।

पञ्चाङ्ग एवं ग्रहको भोग्यावधि र दैनिक लग्नारम्भको समय घण्टा मिनेटलाई बजेमा परिवर्तन गर्दा मध्याह्न १२ बजेपछिको समयलाई क्रमगतरूपमा १३, १४, ...२३ आदिदेखि मध्यरातको १२ बजे पछिको समयलाई भने २४ घण्टामा घटाएर क्रमश: ०, १, २, ३, ४, ५ र ६ बजेमा भोलिपल्टको सूर्योदय नहुँदासम्मलाई अघिल्लै दिन सम्झनुपर्ने कुरालाई नियमानुसार क्रमबद्ध ढङ्गमा समावेश गरिएको छ । यसरी केवल घण्टा मिनेटमा हेर्दा सामान्य कठिनाई हुन सक्ला । तर एक दिन हामी त्यसमा लाग्नै पर्ला जस्तो लागेर यो नवीन प्रयोगबाट हामी सबैलाई पञ्चाङ्गको महत्व वुझ्न सरल होला कि भन्ने भावनाले यस विधिलाई अवलंवन गरि-एको हो । यदि कसैलाई घडी पला नै आवश्यक परेको खण्डमा बजे (घण्टा मिनेट)मा उपरोक्त दिनको सूर्योदय घटाई २.५ (अडाई)ले गुणन गर्दा बजेबाट घडीपलाको जानकारी लिन सकिन्छ ।

दैनिक लग्नको वारेमा भन्नुपर्दा कुन दिनको कुन समयमा कुन लग्न आरम्भ हुन्छ, त्यसै अनुसार आफ्नो कार्यतालिका निर्धारण गर्न सरल होला कि भन्ने उद्देश्यले यो कुरा समावेश गरिएको हो ।

यस पात्रोमा दिइएको हरेक लग्नको पछाडि न.२,३,६,७,९,१२ शुद्ध अंशाको समय हो । लग्न र शुद्ध नवमांशको समय जान्नका लागि भने साइत हेर्दा सम्बन्धित विज्ञसंग परामर्श गर्न सकिन्छ ।

कुनै पनि आवश्यक समयको लग्न गणना गर्न सूर्यादि स्पष्ट साप्ताहिक भन्दा दैनिकरूपमा हुदाँ केही हदसम्म सरल हुन्छ भन्ने उद्देश्यले सूर्य लगायत चन्द्र, मङ्गल, बुध, वृहस्पति, शुक्र, शनि तथा राहु-केतु ग्रहहरूको दैनिक सूर्योदय समयको दैनिक ग्रहस्पष्ट तालिका पनि राखिएको हो । पूर्ववत् दिईदै आएको अवधि इष्टकालीन साप्ताहिक ग्रहस्पष्ट कायमै छ । हुनत ग्रहकोस्थिति प्रत्येक क्षणमा बदलिने गर्दछ ।

कसैको जन्म जुन स्थानमा भएको छ, प्रामाणिक पञ्चाङ्गको माध्यमले सो स्थानको स्थानीय सूर्योदयको आधारमा पञ्चाङ्ग

निर्माण गरेर जन्म कुण्डली निर्माण गर्दा शुद्ध सहायक सिद्ध होला कि भन्ने विचारले कुनै पनि ठाउँको पञ्चाङ्ग सूर्योदयको समयलाई चर-बेलान्तर-क्रान्तिद्वारा गणितीय माध्यमबाट प्रामाणिक पञ्चाङ्गको समयसँगको भिन्नता जान्नका लागि दैनिक चर, दैनिक क्रान्ति, विभिन्न ठाउँहरूको अंक्षाश, देशान्तर र प्रामाणिक समयान्तर तालिकानुसार गणना गरेर पनि हेर्न सकिन्छ। उपर्युक्त तालिका केही वर्षदेखि यस पञ्चाङ्गमा समावेश गरिएको छ।

आवश्यक ठाउँको अंक्षाशको आधारबाट कुनै समयको क्रान्तिको मिलन विन्दुको मापन एकाइलाई चर भनिन्छ। उत्तरी र दक्षिणी गोलार्द्धको चरविन्दु फरकफरक हुने गर्दछ।

स्थानीय प्रमाणिक सूर्योदय =

६ घण्टा ± चर ± समयान्तर ± बेलान्तर

(क) अंक्षाश र क्रान्ति दुवै उत्तर वा दक्षिण भएमा चर -(ऋण)।

(ख) अंक्षाश उत्तर तथा क्रान्ति दक्षिण एवं विपरित अंक्षाश दक्षिण क्रान्ति उत्तर भएमा चर +(धन)।

(ग) समयान्तर विपरित संस्कार +(धन) भए -(ऋण) र -(ऋण भएमा +(धन)।

(घ) बेलान्तर भने तालिकानुसार जे छ त्यसै गर्ने। (धन भए + तथा ऋण भएमा -)।

यस पञ्चाङ्गमा उल्लिखित चरतालिका नेपाल उपयुक्त किरणवक्री भवन संस्कृत चर भएको हुदाँ बैदेशिक सूर्योदय निकाल्दा चरमा पुनर्विचार गर्नुपर्ने हुन्छ। तर यस पञ्चाङ्गमा दिइएको चरतालिका नेपालको कुनै पनि आवश्यकीय ठाउँको प्रामाणिक सूर्योदय निकाल्न प्रयोग गर्न सकिन्छ। स्मरण रहोस्, यस पञ्चाङ्गमा उल्लिखित समय अन्तर नेपालको गौरीशङ्कर हिमाल ८६° १५' (०° ०' ग्रीनवीचबाट सुरु भई पूर्वतर्फको) नेपालमान्य पूर्वीय देशान्तरको आधारमा नेपालको स्थानीय समायान्तर पूर्वतर्फ+(धन) र पश्चिमतर्फ-(ऋण) तालिका प्रस्तुत गरिएको छ। समयान्तर जिल्ला सदर-मुकामको निश्चित ठाउँको भएकाले सदरमुकाम भन्दा पूर्वको समयमा २४ किलोमिटर बराबर १ मिनेट जोड्ने र पश्चिमको लागि घटाउने तर उत्तर दक्षिणमा केही गर्नु पर्दैन।

लग्न/समयको महत्त्व

विविध कार्य सही तरिकाले सम्पादन गर्न र प्रतिफल हासिलगर्न समयको महत्त्वपूर्ण भूमिका रहेको हुन्छ। जुनसुकै कार्य सही समयमा सम्पन्न भएमा मात्र त्यसले राम्रो फल दिन सक्दछ। असारमा रोपेको धानले मात्रै प्रतिफल राम्रो दिएजस्तै हाम्रो दैनिक जीवनमा गरिने धार्मिक कृत्यहरूले पनि शास्त्रले बताएका समयमा गरिए मात्र पूर्ण फल पाउन सक्दछन्। अन्यथा शास्त्रलाई मात्र दोष दिनु निन्दनीय ठानिन्छ। ज्योतिषशास्त्रमकर्मको देश (स्थान), काल (समय) र परिस्थिति (वातावरण) बताइएका छन्। ती मध्ये पनि लग्न अझ सूक्ष्म समय मानिन्छ। एक दिवसीय वा बहुदिवसीय कार्य शुभारम्भ गर्न लग्नले महत्त्वपूर्ण भूमिका खेल्दछ। बाइओटा राशिकैनामले लग्नको पनि चर, स्थिर, द्विस्वभाव गरी विभाजन गरिएको छ। त्यसअनुसार नै कामको प्रकृति छुट्याई चर लग्नमा यात्रादि कार्यहरू, स्थिरलग्नमा गृहारम्भ, प्रवेशादि स्थिर कर्महरू र द्विस्वभाव लग्नमा विवाहादि अन्य मिश्रित कर्महरू गर्न सकिन्छ, जस्तैः **मेषो कर्कटतूलायां मकरश्चैवराशयः। चरकार्याणि कुर्वाच्च स्थिरकार्याणि चैव हि॥ पञ्चाननो वृषः कुम्भो वृश्चिकः स्युः स्थिराणि हि। कन्यधनुश्च मीनश्च मिथुनं द्विस्वभावतः॥ द्विस्वभानि कर्माणि कुर्यदिषु विचक्षणः॥**

पञ्चाङ्गहरूमा सरल तरिकाले विभिन्न कार्यसम्पादनकोलागि लग्नहरू छुट्याइए कै छ, तापनि हाल भने लग्न वा समयको ख्याल नगरी आफू खुसी गृहारम्भ, गृहप्रवेश, वास्तुपूजा, व्रतवन्ध, विवाहादि कर्म चलाएको देखिन्छ। व्रतवन्धको लागि ७, ११ र १२ वर्ष तोकिएको छ। यो समय काटेमा यसको दुईगुना समयसम्म गौणकाल मानिएको छ। यदि गौण काल लागेमा व्रात्यष्टि/व्रात्यदोष प्रायश्चित्त गरेर उपनयन गर्ने कुरा गृह सूत्रकारले भनेका छन्। यस विषयमा सबैले ध्यान दिनु वाञ्छनीय हुन्छ। २०८०मा एकजना सम्बन्धित विज्ञले नै बेलुका ८ बजेको गृहारम्भको साइत दिएको प्रमाण भेटिएको छ। यसरी प्रातकालमा नै हुन कर्महरू रौद्रकाल (सायंकाल)मा गर्दा त्यसको असर गर्ने र गराउने दुवैमाथि पर्दछ। पञ्चाङ्गमात्रै शुद्ध भए, लग्न नमिलेमा पनि शास्त्रीय विकल्प खोज्नु अत्युक्ति हुँदैन। विवाहमा पनि साइतपत्रको ख्याल नगरी केवल साइपाटा र फोटोग्राफीका निहुँमा साइत सकि पछि मात्रै विवाहमा पुग्ने वा सुरु हुने चलन जताततै देख्न पाइन्छ। यस कुराले एकातिर समयको सदुपयोग हुन सकेको छैन भने अर्कोतिरगलत समयमा कर्मगर्दा त्यसको फल पनि धेरैजसो नकारात्मकता नै हुने देखिन्छ। त्यसकारण हामी सबैले समयको महत्त्व बुझी कर्महरू शास्त्रीय र मर्यादित बनाउन सकौं।

नेपालमा मनाइने प्राय सबै धर्मावलम्बीका चाडपर्व लगायत राष्ट्रिय-अन्तर्राष्ट्रिय दिवसहरू सायै विभिन्न उपयोगी ज्योतिषीय सामग्रीले सुसज्जित सर्वोपयोगी ढङ्गले यस पञ्चाङ्गलाई प्रस्तुत गर्ने प्रयास गरिएको छ। क्रिया, प्रतिक्रियाको अभिलाषा राख्दै उचित सल्लाह र सुझावको अपेक्षामा यदि कहि कतै कुनै पर्व छुटेको भए सप्रमाण सहित नगरपालिका, गाउपालिका वा मान्यताप्राप्त संघसंस्थाको सिफारिस सहित हाम्रो कार्यालयमा वा नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिमा सम्पर्क गरी पठाउन सकिन्छ। यस पञ्चाङ्गलाई कस्तो रूपमा देख्न चाहनु हुन्छ, लेखेर वा भनेर पठाउनु हुन पनि अनुरोध गरिन्छ। सबै पाठक वृन्दमा विशेष धन्यवाद ज्ञापन गरिन्छ।

## वार्षिक भविष्य फल

श्री शाके १९४६, विक्रम २०८१ संवत्को **कालयुक्तनामक: संवत्सर** हो। यो प्रभवादि ६० संवत्सरमध्यको ५२ औं संवत्सर हो। यसवर्षका **राजा मङ्गल** तथा **मन्त्री शनि** ग्रह हुन्। अन्य ग्रहले निम्न विभागहरू भोग्नेछन्- धान्येशमा चन्द्र, मेघेशमा शनि, रसेशमा बृहस्पति, सस्येशमा मङ्गल, नीरसेशमा मङ्गल, फलेशमा शुक्र, धनेशमा मङ्गल, दुर्गेशमा शनि ग्रह गठन भएकोले शुभ ३० र अशुभ ७० प्रतिशत सहभागिता हुँदा ग्रह परिषदले आ-आफ्नो कार्यसुचारु ढङ्गले संचालन गरी निम्न शुभाशुभ फलप्रदान गर्नेछन्। यसवर्षको आरम्भमा धनुष जगल्लग्न पर्न आउँछ।

यसवर्षको **कालयुक्त**: संवत्सरले जनमानसमा खुशी र शान्ति तुल्याउने प्रयत्न होला। **राजा:मङ्गलले** खासै राम्रो गर्न सक्ला जस्तो लाग्दैन। **मन्त्री:शनिले** शासकवर्गमा अहमत्वको अवस्था देखा पर्दा जनतामा निराशा छाउला। तर राजा र मन्त्रीको आपसी सम्वन्ध पनि मध्यम फलदायक होला जस्तो लाग्दछ।

राजनीतिमा केही विवादित विषय निस्के पनि खासै विग्रह नमच्चेला। नेतृत्वतहमा सुधारको आभापले विकास निमार्णमा सिथिलता देखिए पनि कहि कतै विकास निमार्णको कार्यले प्रगति देखाउला। सीमा सम्वन्धी मामलामा विश्वस्तरीय सदाशयताको प्रचुरता देखिए पनि उपलब्धि भने शून्यसरह (नगन्य) देखिएला।

आर्थिक सन्तुलन द्रुतगतीमा चल्ला। आर्जनमार्गको सुदृढताले गर्दा व्यापार व्यावसाय राम्रो ढंगले हुन सक्ला। उद्योगधन्दाले बेरोजगारी समस्या समाधानार्थ नयाँ योजनाको प्रारम्भ भए पनि कार्यान्वयनमा सिथिलता छाउला। वैदेशिक रोजगारीले आर्थिक सन्तुलन स्थिर बनाउने कार्यमा उत्साह जगाउला। कृषिजन्यकार्य तथा पशुपालनका व्यावसायमा समर्पितहरूको जीवनस्तर सुध्रिदै जाला। जग्गा- जमिन सम्बन्धीको कारोवारले आर्थिक स्थिति मजबुत बनाउला। समग्रमा भन्दा यस वर्षको आर्थिकता राम्रै अवस्था देखिएला।

स्वास्थ्य विज्ञानको प्रगतिले जटिल रोगहरूमा शमनका उपाय निक्लिए पनि अन्य ठुला संक्रामक रोगब्याध नियन्त्रणमा भ्याक्सिनले पनि धान्न जटिलता नै आउला।

सामाजिक विसंगतिहरूमा देखासिकी र अहमताको भावना सबैमा भएको महशुस होला। चोरी-डकैती-हत्या-बलात्कारादि अशोभनीय घटनाहरू क्रमश: नियन्त्रणशील बन्दै जाला। लुच्चा लफङ्गाहरूको बाहुल्यतामा पनि कमी आउला। पापीय भावनामा धार्मिकताको वृद्धिले समाज संस्कारित हुदैं जाग्नाले सबै खुशी र सुखी होलान।

प्रशनिककार्यमा पनि उत्साह बढ्नाले जनमानसमा शान्ति छाउला। सरकारीमा भन्दा गैरसरकारी शैक्षिक संस्थाले समाजमा योग्य र कुशल शिक्षार्थी उत्पादन गर्नाले शिक्षा क्षेत्र केही हदसम्म सफल बन्ला। वैदेशिक छात्र-छात्राहरू बढी सार्थक होलान। तर विद्यार्थीको हितमा चाँसो नजाग्ला। समग्रमा भन्दा शैक्षिक क्षेत्रमा उत्सुकताले सफलता हासिल गराउला।

वास्तविक पत्रकारको सुरक्षामा राज्यको ध्यानमा कमै पुगे पनि आफ्नो पेशालाई मर्यादित बनाउने कार्यमा लागि पर्लान। श्रमजिवीवर्गमा सेवाको कदर र सुविधामा ध्यान नपुग्दा खिन्नता छाउला। कलाकार- साहित्यकारको प्रगति भइरहला। निजामती कर्मचारी अनुशासित बन्ने प्रवृतिको विकास हुँदै जाला। उच्चतहका सेवकहरू मर्यादित होलान।

प्रमुख खाद्यान्नवालीमा धान, गहुँ, मकै, जौ, कोदो, फापर आदि खाद्यान्नको उत्पादन शीलतामा वृद्धि भए पनि बजार भाउ अनियन्त्रित न होला भन्न सकिदैन। सुन-चाँदी आदि धातु र हीरा, मोति, पन्ना, मणि-माणिक्यादिको बजार भाउ उच्चतामा पुग्लाने व्यापक खिन्नता छाउला।

अग्नि, वायु वतासको आपसी असमझदारीले कहिं कतै उग्ररुप धारण गर्ला। जलवायु परिवर्तनको कुप्रभावले विद्यमान तापक्रममा प्रतिकूलताले अशान्ति छाउला। भूक्षय, भूस्खलन, भूकम्प आदि दैवीय विपत्ति, स्थल तथा हवाई दुर्घटनाको प्रचूरता पनि नभएको होईन। कुनै भू-भागमा अनावृष्टिले खाद्य उत्पादनमा कटौती, कतै खण्डवृष्टिले सुख्खा-खडेरीको प्रधानता र कही अतिवृष्टिले बाढी-पहिरो लगायतका विपति न ल्याउला भन्न सकिदैन।

## १. अष्टोत्तरी मतानुसार आय–व्ययको बिवरण

| राशि | मे. | वृ. | मि. | क. | सिं. | कं. | तु. | वृ. | ध. | म. | कुं. | मी. | योग |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आय | ८ | २ | ५ | १४ | २ | ५ | २ | ८ | ११ | १४ | १४ | ११ | ९६ |
| व्यय | १४ | ८ | ५ | २ | १४ | ५ | ८ | १४ | ५ | १४ | १४ | ५ | १०८ |

**दृष्टव्यः** विन्ध्योत्तर निवासीकालागि विंशोत्तरी र विन्ध्याचलबाट दक्षिण निवासीकालागि अष्टोत्तरी तर नेपालकोलागि विंशोत्तरी मत अनुसारको आय-व्यय बिवरण हेर्नुहोला ।

## २. विंशोत्तरी मतानुसार आय–व्ययको बिवरण

| राशि | मे. | वृ. | मि. | क. | सिं. | कं. | तु. | वृ. | ध. | म. | कुं. | मी. | योग |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आय | २ | ११ | २ | ११ | १४ | २ | ११ | २ | १४ | ८ | ८ | १४ | ९९ |
| व्यय | १४ | ५ | ५ | १४ | ११ | ५ | ५ | १४ | २ | ५ | ५ | २ | ८७ |

**आय–व्यय ज्ञानविधिः** आफ्नोराशिको उपयुक्त आय-व्यय अंक जोडने, जोडमा १ अंक कम गरेर ८ ले भाग गर्दा शेष १ रहेमा लाभ, २ मा सुख, ३ मा दुःख, ४ मा रोग, ५ मा अपवाद, ६ मा सम्मान, ७ मा विजय, ८ वा ० मा हानिको योग यो वर्षमा हुनेछ । सारांशमा १, २, ६, ७ भाग शेष रहेमा यो वर्षमा लाभ, भाग्यको उदय, नोकरी धन्दामा पदोन्नति आदि हुनेछ भने, २, ४, ५, ० भाग शेष रहेमा मानसिक चिन्ता र खर्च वढ्ने आदि हुनेछ ।

| मेष विषुवच्चक्रम् | फलानि | तुला विषुवच्चक्रम् |
|---|---|---|
| उभा.रे.अ.भ.कृ.रो.मृगशिरा. | शीर्षे–भूलाभः | श्रवण.ध.श.पू.उ.रे.अश्विनी |
| धनिष्ठा. शतभिषा. पूभा. | मुखे–पाण्डित्यम् | मूल. पूर्वषाढा. उतराषाढा |
| ज्येष्ठा.मूल.पूषा.उषा.श्रवण. | हृदि–धनागमः | चित्रा. स्वा. वि. ऽनु. ज्येष्ठा |
| स्वाती. विशाखा. ऽनुराधा. | दक्षकरे–स्त्रीलाभः | पूर्वफाल्गुनी. उफा. हस्ता. |
| उफा. हस्ता. चित्रा. | वामकरे–भैक्षम् | तिष्य. श्लेषा. मघा. |
| श्लेषा. मघा. पूफा. | दक्षपादे–भ्रमणम् | मृगशिरा. आर्द्रा. पुनर्वसु. |
| आर्द्रा. पुनर्वसु. तिष्य. | वामपादे–कष्टम् | भरणी. कृतिका. रोहिणी. |

## जगल्लग्न कुण्डली

८।८।२८।११।




## जगल्लग्न फलम्

(जन्मलग्न/जन्मराशिबाटहेर्ने)

| | |
|---|---|
| मेष | ९. धमार्थप्राप्तिः |
| वृष | ८. कष्टम् |
| मिथुन | ७. स्त्रीसुखम् |
| कर्कट | ६. अरिपराजयः |
| सिंह | ५. पुत्रसुखम् |
| कन्या | ४. मित्रसुखम् |
| तुला | ३. कुटुम्बवृद्धिः |
| वृश्चि | २. धनलाभः |
| धनु | १. देहसुखम् |
| मकर | १२. दुःखदाद्रियम् |
| कुम्भ | ११. लाभः |
| मीन | १०. सुखम् |

**मेषविषुवत्को शान्तिः** उशीर, वालं, प्रियुंगु गोरोचन, सहदेवी, कमलापत्र, माधवको प्रतिभा, कलश, वस्त्र, पूजा भाग, दानप्रतिष्ठा, ब्राम्हण भोजन, दक्षिणा, त्रिमधुले होमगर्ने ।

**तुलाबिषुवत्को शान्तिः** उशीर, वालं, अगरु कपूर, श्रीखण्ड, रक्तचन्दन, कूट, लोघ, गोरोचन, गोविन्दको प्रतिमा, कलश, पहेलोवस्त्र, सेतोफूल, पञ्चामृत, गोदान, दानप्रतिष्ठा, ब्राम्हणभोजन, दक्षिणा, मह र डुम्रीले होमादि गरी गंगास्नान, नारायण पूजा, रुद्री पाठ, चण्डी (दुर्गा सप्तशती) पाठ गर्दा सुख शान्ति पाइन्छ भन्ने भनाइ छ ।

**यी शान्तिका प्रयत्नहरु वामपादमा पर्नेले गर्नुपर्दछ ।**

## शनिको अढैया तथा साढेसाती दशाको बिचार

यसवर्षको वर्षारम्भदेखि वर्षान्तसम्म शनिदेव कुम्भमा रहनाले **वृश्चिक** र **कर्कट** राशिकालाई **शनिको अढैया** लाग्नेछ । त्यस्तै मकरलाई **अन्त्य साँढेसाती**, कुम्भलाई **मध्य साँढेसाती** र मीनलाई **आद्य साँढेसाती** लाग्नेछ ।

**यसकोफलः** जन्मको शनि असल भएमा आकस्मिक लाभ, कार्यसिद्धि, मानप्रतिष्ठा-आर्थिकतामा क्रमिक सुधार शारीरिक व्याधिबाट मुक्ति, लक्षित लक्ष्यको प्राप्ति र मान्यजनको सहानुभुति मिल्नेछ । तर पनि शनि विशेषत् दुःखदायी ग्रह भएकोले अपव्यय, दुःख, कार्यमा विलम्वता, मान प्रतिष्ठामा आघात, मानसिक अशान्ति, पदोन्नतिमा अवरोध, पशु चौपायामा हानि-नोक्सानी गराउने हुँदा पूर्वोक्त राशिहुनेहरूले शनिको जप पुजा-पाठले सुखसन्तोष हुन्छ भन्ने धारणा छ ।

### साढेसाती हुनेले शनिको पाठगर्दा भन्ने मन्त्रः

नमस्ते कोणसंस्थाय पिङ्गलाय नमोस्तु ते ।
नमस्ते विभुरूपाय कृष्णाय च नमोस्तु ते ॥
नमस्ते रौद्रदेहाय नमस्ते चान्तकाय च ।
नमस्ते यमसंज्ञाय नमस्ते सौरये विभो ॥
नमस्ते मन्दसंज्ञाय शनैश्चर नमोस्तु ते ।
प्रसाद कुरु देवेश दीनस्य प्रणतस्य च ॥

### पीपलमा जल चढाउँदा भन्ने मन्त्रः

मूलतो ब्रम्हरूपाय मध्यतो विष्णुरूपिणे ।
अग्रतः शिवरूपाय अश्वत्थाय नमोनमः ॥

### पीपललाई प्राथना गर्ने मन्त्रः

अश्वत्थयस्मिन्त्वयि वृक्षराजः नारायणतिष्ठति सर्वकाले ।
अतः श्रुतस्त्वं सततंतरुणां धन्योऽसि चारिष्ट विनाशकोऽसि ॥
कोणोऽन्तको रौद्रयमोऽथवभ्रुः कृष्णः शनिः पिंगल मन्दसौरी ।
नित्यस्मृतो यो हरते च पीडा तस्मै नमः श्रीरविनन्दनाय ॥

**मासफल वैशाख:** महीनामा ५ शनि, आइत र सोमवार तथा सूर्यसंक्रान्ति पनि शनिवार परेको छ। चैत्रशुक्ल र वैशाख कृष्ण/शुक्लपक्ष **वैशाख** महीनामा पर्दछ। शनिवासरीय संक्रान्तिले सुखद जस्तो भए पनि ५ शनिले बजारभाउ अनियन्त्रित बनाउँला। ५ आइतले रोगब्याधको प्रकोप बढाउला। ५ सोमले खाद्यवस्तुको भाउ नियन्त्रणमा ल्याउने प्रयत्न होलान।

राजनैतिक शक्तिहरू मिलेर राज्यव्यवस्था संचालन गर्लान। प्रशनिक काम कार्यमा पनि उत्साह बढ्नाले जनमानसमा शान्ति छाउला। सामाजिक कुरीतीहरूमा उच्च मनोभावना जाग्दा पापीय मनोबृतिमा ह्रास आउला। ब्यापार व्यवसायबाट, कृषिजन्यकार्य र पशु-पंक्षिपालनले राम्रै उपलब्धि हासिल गराउला। स्वास्थ्य विज्ञानको प्रगतिले रोगव्याधका प्रकोप नियन्त्रिणमा आउला। शैक्षिक क्षेत्र सुमधुर वातावरणले युक्त रहला। पापजन्य कार्य निरुत्साहित बन्दै जाला। धार्मिक कार्यहरूको व्यापकताले धर्मकर्ममा लाग्नेहरूको उत्थान होला। कृषिकार्य र पशुपंक्षिपालनबाट जीवन धान्न सहजता आउला। वैदेशिककार्यबाट सुखी वातावरण बन्ला। आर्थिक सन्तुलनमा उतार चढाव आइरहला। मूल्यवान्धातु लगायत सुन, चाँदी तथा रत्नहरूमा महंगाइ उत्पन्न होला। अन्य वस्तु भने सामान्य अवस्थाका होलान। दैवीय लगायतका सवारी दुर्घटनाको भयमा पनि न्यूनता छाउला।

अग्नि, वायु बतासले उग्ररुप धारण गर्ला। महीनाभरी जस्तै १/२ दिनको अन्त्यतिर मौसम मेघ बादल दर्शन सहित वर्षात्को सभावना नहोला भन्ने छैन। विशेषत् दक्षिणतिर तनावग्रस्त देखिए पनि अन्यत्रमा भने सुख शान्तिको प्रत्याभूति होला।

**मासफल ज्येष्ठ:** महीनामा ५ मङ्गल, बुध, विही र शुक्रवार तथा सूर्यसंक्रान्ति मङ्गलवार परेको छ। वैशाखशुक्ल र ज्येष्ठकृष्ण/शुक्लपक्ष **जेठ** महीनामा पर्दछ। भौमवासरीय संक्रान्तिले राष्ट्रलाई सफल नै बनाए पनि भयपूर्ण वाताबरण निम्तिन सक्छ। ५ बुधले रसवस्तुको उचित उत्पादन गराउँला। ५ वृहस्पतिले अन्नपात लगायत खाद्यान्नहरुको बजार भाउ नियन्त्रणमा ल्याउला। ५ शुक्रले जनसंख्याको अभिवृद्धि गराउँला।

जोश, जाँगरको वृद्धिले मन शान्त पार्ला। राजनीतिमा अग्रसर नेतागणले हर्षोल्लोसमय समय ल्याउलान। प्रशासनिक क्षेत्र जन चाहना अनुसारको अनुकूल देखिएला। स्वास्थ्य विज्ञानको प्रगतिले रोगब्याधका प्रकोप नियन्त्रिणमा आउला। शैक्षिक जगत सुधारले युक्त रहला। धार्मिक गतिविधिले प्रश्रय पाउला। दैवी दुर्घटना लगायतका विपतिहरू न्यूनीकृत होलान। पापीय मनोभावको सुधारले मानसिक शान्ति बढ्ला। व्यापार-व्यवसायबाट समुन्नति होला। कृषिजन्यकार्य र पशु-पंक्षिपालनबाट प्रगति गर्ला। तर सामाजिक कुसंगतिले हतोत्साहित बनाउला। अनावश्यक खर्च नियन्त्रित बन्न मुस्किलै।

दैनिक उपभोग्य खाद्यान्न, लत्ता-कपडा, लगायत सवारी साधनहरू तथा मूल्यवान् धातुहरू सुन, चाँदी, मणि, मोति लगायतका बहुमूल्य वस्तु पनि मंहगा होलान।

भूक्षय, भूकम्प, बाढी, पैरो, सवारी दुर्घटना जस्ता दैवीय विपतिको संभाब्यता होला। महीनाभर मौसममा गडबढी मच्चेला। कही खण्डवृष्टि, कतै अतिवृष्टि होला। प्रायश: सबै पूर्व, पश्चिम, उत्तर र दक्षिण दिशामा सुखद परिस्थिति देखिएला।

**मासफल आषाढ:** महीनामा ५ शनि, आइत र सोमवार तथा सूर्यसंक्रान्ति पनि शनिवार परेको छ। ज्येष्ठशुक्ल र आषाढकृष्ण/शुक्लपक्ष **असार** महीनामा पर्दछ। शनिवासरीय संक्रान्तिले सुखद जस्तो भए पनि ५ शनिले महंगी बढाउला। ५ आइतले रोगब्याधको प्रकोप बढाउला। ५ सोमले खाद्यवस्तुको भाउ नियन्त्रणमा ल्याउने प्रयत्न होलान।

अन्याय अत्याचार जस्ता कार्यले प्रशस्त: मान्यता पाउला। राजनैतिकदलहरू गोलमटोल प्रवृति अंगाल्दा राजनीति प्रति जनता अरुष्ठ बन्दै जालान। सामाजिक कुरीतिले हतोत्साहित बनाउला।

प्रशासनिक कार्यमा भने निजामती सेवकले सामान्य आशा दिलाउलान। पराक्रमको गतिको उत्पतिले सर्वत्र नरमी छाउला। ब्यापार व्यवसायले सामान्य उन्नति गर्ला। वैदेशिक रोजगार फाइदाजनक होला। शिक्षाको क्षेत्रमा पनि सुधारका वातावरणहरू देखिएला। धार्मिक कार्यले प्रशस्तै प्रश्रय पाउला। रोगब्याध प्रकोप नियन्त्रणमा स्वास्थ्य विज्ञानले प्रगति नै गर्ला। कृषिजन्यवस्तु र पशु/पंक्षिको कारोवारबाट सुधारले आर्थिकमन्दी निराकरण तर्फ उन्मुख बन्दै जाला। जग्गा जमिनबाट राम्रै प्रतिफल हासिल गराउला। प्रमुख खाद्यान्नको भाउमा सरलता आउला। आवश्यकीय लत्ता-कपडा लगायत बहुमूल्यधातु (सुन, चाँदी) तथा मूल्यवान् रत्नहमा महंगीको प्रकोप न होला भन्न सकिदैन।

मेघबादल सहित खण्डवृष्टि र बाढीपहिरो आदिको संभावनाले कही कतै भूक्षय भूस्खलादिको प्रवलता आउला। महीना भर नै १/२ दिनको अन्तरमा वर्षात्को संभावना रहला। देशको अन्यत्र भन्दा दक्षिणी भेगमा तनावग्रस्त अवस्था आउला।

**मासफल श्रावण:** महीनामा ५ मङ्गल, बुध, बिही र शुक्रवार सूर्यसंक्रान्ति पनि सोमवार परेको छ। आषाढशुक्ल र श्रावणकृष्ण शुक्लपक्ष **साउन** महीनामा पर्दछ । भौमवासरीय संक्रान्तिले राष्ट्लाई सफल नै बनाए पनि भयपूर्ण वाताबरण निम्तिन सक्छ । ५बुधले रसवस्तुको उचित उत्पादन गराउँला । ५ वृहस्पतिले अन्नपात लगायत खाद्यान्नहरुको वजार भाउ नियन्त्रणमा ल्याउला । ५ शुक्रले जनसंख्या वृद्धिमा अहमता देखाउँला ।

राष्ट्रिय राजनीति समयानुकूल बन्दै जालान। प्रशासनिककार्यको पनि प्रशंसा हुन थाल्ला । व्यापार व्यावसायबाट आर्थिक सन्तुलन स्थिर बनाउला । कृषिकार्य र पशु-पंक्षिपालनको कारोवार उच्च रहला । जग्गा जमिन सम्वन्धी कार्यले प्रतिष्ठित बनाउला । शैक्षिक जगतमा सुधारका क्षणहरू आउलान। सुख शान्तिको वातावरण देखिएला । धार्मिकता प्रतिको आस्था घट्ला । सामाजिक कुसंस्कार लगायत पापीय मनोभावले मानसिक अशान्ति गराउला । जोश-जांगरमा गिरावट आउनाले सन्तोषमा कमि आउला । संक्रामक रोगव्याधको प्रकोप नियन्त्रणमा आउन मुस्किल देखिँदा स्वास्थ्य विज्ञानमा प्रश्न उठन सक्छ । दैनिक उपभोग्य लत्ता कपडाहरू, मुख्य खाद्यान्न लगायत मूल्यवान् धातु सुन, चाँदी तथा रत्नहरूमा महंगाइ उत्पन्न होला ।

मेघवादल दर्शन सहितको संभावनाले कही कतै भुक्षय, भूकम्प, बाढी, पैरो, सवारी दुर्घटना जस्ता दैवीय विपतिले प्रवलता नभएको होइन । महीनाभर मौसममा गडवढी देखिएला । कही खण्डवृष्टि, कतै अतिवृष्टि नहोला भन्ने छैन । देशको अन्यत्र भन्दा प्रायश: पश्चिमी दिशामा अशुभ अवस्था आउला ।

**मासफल भाद्र:** महीनामा ५ शनि, आइत र सोमवार तथा सूर्यसंक्रान्ति पनि शनिवार परेको छ । श्रावणशुक्ल, भाद्रकृष्ण/शुक्लपक्ष **भदौ** महीनामा पर्दछ। शनिवासरीय संक्रान्तिले सुखद जस्तो भए पनि ५ शनिले बजारभाउ अनियन्त्रित बनाउँला । ५ आइतले रोगब्याधको प्रकोप बढाउला । ५ सोमले खाद्यवस्तुको भाउ नियन्त्रणमा ल्याउने प्रयत्न गर्ला ।

अन्याय अत्याचार जस्ता पापीयमनोवृति विस्तारै घट्ला। धार्मिक गतिविधिले समाज सुशोभित बन्ला । नेताहरूको मतैक्यको अभाव देखिए पनि राजनैतिकदलहरू मिलेर राज्य संचालन गर्लान। दैवी विपति लगायत सवारी दुर्घटना नघट्ला । अवस्था खासै अनुकूल बन्न नसक्ला । जोश-जाँगरमा गिरावट आउनाले सन्तोषमा कमि आउला । संक्रामक रोगव्याधको प्रकोपमा नियन्त्रणमा आउन मुस्किल देखिंदा स्वास्थ्य विज्ञानमा प्रश्न उठन सक्छ ।

व्यापार-व्यवसाय लगायत कृषिजन्यकार्य र पशु-पंक्षिपालनबाट जीवनस्तरमा सुधारको वातावरण देखिएला। धार्मिक आस्था जाग्दा मानसिक शान्ति छाउँला। शिक्षामा सुधारका मार्गहरू प्रशस्तै देखिएलान । प्रशासनले जनहितमा अग्रसरता देखाउला ।

आवश्यकीय दैनिक उपभोग्य खाद्यवस्तु, लत्ता-कपडा आदिको भाउ आकासिदै जाने संभावना र सुन-चाँदी बहुमूल्य धातु/मणि माणिक्य आदि रत्नको भाउ अनियन्त्रित बन्दै जाला ।

मेघबादल दर्शन सहित भारी वर्षाको संभावना भए पनि वर्षा पुरै महीनाभर देखिएला । कही कतै बाढी पहिरोले जनजीवन नै अस्त व्यस्त पार्ला । वायु बतासले पनि चिसोपना निम्त्याउला । खास गरेर अन्तको भन्दा पश्चिमतिरको वातावरण उपर्युक्त रहला ।

**मासफल आश्विन:** महीनामा ५ मङ्गल र बुधवार तथा सूर्य संक्रान्ति मङ्गलवार परेको छ । भाद्रशुक्ल र आश्विनकृष्ण/शुक्लपक्ष **असोज** महीनामा पर्दछ । भौमवासरीय संक्रान्तिले सामान्य सफल बनाए पनि त्राशदीपूर्ण वातावरण सिर्जेला । ५ बुधले रसवस्तुको उचित उत्पादन गराउँला ।

आर्थिक सन्तुलन स्थिर बन्दै गएको अनुभूति होला । व्यापार व्यावसायबाट आर्थिक सन्तुलन स्थिर बनाउला । कृषिजन्य कार्य र पशु-पंक्षिपालन व्यवसायले फाइदै गराउला । जग्गा जमिनको कारोवारले सफलै बनाउला । सामाजिक कुरीतीहरूमा उच्च मनोभावना जाग्दा पापीय मनोवृतिमा ह्रास आउला । स्वास्थ्य विज्ञानको प्रगतिमा अनेकौं रोगव्याधको प्रकोप नियन्त्रणमा आउन नसक्ला । शत्रुहरू सल्बलाउन खोज्लान । राजनैतिक शक्तिहरू मिलेर राज्य व्यवस्था संचालन गर्लानि । प्रशनिक कार्यमा उत्साह वद्नाले सबै सुखी होलान । शैक्षिक स्तरमा बढोत्तरी होला । धार्मिक गतिविधिले समाज सुशोभित बन्ला । दैवीयविपति लगायत सवारी दुर्घटनामा कमि आउला। मूल्यवान् रत्न-धातु, विविध प्रकारका सवारी साधन, रसवस्तु र मुख्य खाद्यान्न, मसालाजन्य पदार्थहरुमा महंगी कै वद्योत्तरी हुने देखिएला ।

महीनाको पूर्वार्द्ध छिटपुट वर्षातको संभाव्यता अन्त्यतिर मौसमसफा रहें पनि अन्य बेला मेघबादल दर्शन सहित सामान्य वर्षाको संभावना। मेघबादल दर्शन सहित सामान्य वर्षाको संभावना । पूर्वतिर सुखद परिस्थितिले जनतामा खुशी छाउला । तर दक्षिणी भेगमा भने अनेकौं समस्याहरू होलान ।

**मासफल कार्तिक:** महीनामा ५ वृहस्पति र शुक्रवार तथा सूर्यसंक्रान्ति पनि विहीवार परेको छ । आश्विनशुक्ल, कार्तिककृष्ण/शुक्लपक्ष **कात्तिक** महीनामा पर्दछ । गुरुवासरीय संक्रान्तिले सामान्यतया शुभप्रद होला । ५ विहीले अन्नपात लगायत खाद्यान्नहरुको बजार भाउ नियन्त्रणमा ल्याउला । ५ शुक्रले धान्यादि वस्तुमा सर्व सुलभ गर्ला ।

शक्तिशालीहरू स्व हितार्थ प्रस्तुत होलान । दैवी विपति लगायत सवारी दुर्घटनाको प्रवलता । राजनीतिज्ञहरूको आपसी मुटावले राजनीति प्रति जनाक्रोशका बातावरण सुयोग्य बन्न नसक्ला । तर प्रशासनिक कार्यले उत्साहित बनाउला । जोश, जाँगरको वृद्धिले मन शान्त पार्ला । अन्याय अत्याचार जस्ता पापीय मनोवृति घट्ला । धार्मिक गतिविधिले समाज सुशोभित देखिएला । शैक्षिक जगतका मार्गहरू सुधारोन्मुखको अवस्थाका होलान । व्यापार व्यवसायमा, कृषिकार्य र पशु-पंक्षिपालनबाट आर्थिकतामा स्थिरता आउला । अनावश्यक खर्च नियन्त्रित बन्नाले आर्थिकता सुधिएला । रोगव्याधको निधानमा स्वास्थ्य विज्ञानमा सामान्य सुधारका बातावरण देखिएला ।

दैनिक उपभोग्य वस्तुकाभाउ मध्यम होला । अन्य रसवस्तु, वहमूल्य धातु/रत्न, औषधिजन्यपदार्थ, सुतीवस्त्र र खाद्यान्नमा पनि महंगीकै प्रधानता ।

यस महीनाको अन्त्य तिर छिटपुट वर्षातको संभाव्यता देखिए पनि अरु बेलामा भने न्यानो बातावरण देखिएला । सर्वत्र सुखद स्थिति रहें पनि पश्चिममा अशान्त देखिएला । तर पूर्वीय भेगतिर भने सुखद स्थिति देखिएला ।

**मासफल मार्गशीर्ष:** महीनामा ५ शनि र आइतवार तथा सूर्य संक्रान्ति पनि शनिबार परेको छ । मार्गशीर्षकृष्ण/मार्गशीर्षशुक्लपक्ष **मंसिर** महीनामा पर्दछ । शनिवासरीय संक्रान्तिले अवस्था ठिकै गर्ला । ५ शनिले दैनिक उपभोग्य वस्तुहरूमा महंगीको भार बढाउला । ५ आइतले रोगव्याधको प्रकोप वृद्धि गर्ला ।

इच्छित कार्यमा अवरोध हटेर सौभाग्यशाली बनाउला । जोश, जाँगरको वृद्धिले मन शान्त पार्ला । व्यापार व्यवसाय र पशु-पंक्षिपालनबाट पनि आम्दानी वृद्धिको संभावनालाई नकार्न सकिदैन । राष्ट्रिय राजनीति अनुकूल अवस्थाको देखिएला । प्रशासनिक कार्यमा पनि लाभ कै प्रवलता रहला । समाजमा पापीय मनोवृतिका भावना सेलाएर धार्मिक गतिविधिको व्यापकताले प्रफूल्लित बनाउला । शिक्षामा सुमधुर वातावरण रहला । स्वास्थ्य विज्ञानको प्रगतिले रोगव्याधका प्रकोप नियन्त्रिणमा आउला । सवारी दुर्घटना लगायत दैवी विपतिहरूमा न्यूनताको आभाष पाइएला । जग्गा-जमिनको व्यवसायले पनि प्रगति नै गराउला । अनावश्यक खर्च नियन्त्रित बन्दै जालान । शत्रुहरू निस्तेज बन्लान । कृषिजन्यकार्य तथा पशु-पंक्षिपालन व्यावसायले सोचे अनुसार सफलता नदेला । आवश्यकीय खाद्यवस्तु, श्वेत वस्तु, गुलियावस्तु, मसाला-औषधि जन्य पदार्थमा महंगी बढ्ला । सुती, रेशमी वस्त्र आदिका भाउ घट्न सक्ला ।

वर्षातको संभाव्यता महीनाको मध्यतिर देखिए पनि अरु बेलामा भने घमाइलो परिस्थिति होला । प्रायश: सुखद घटनाको बाहुल्यता रहें पनि पश्चिममा अशान्त र तनावयुक्त प्रवृति होला तर पूर्वीय क्षेत्रतिर भने सुखद परिस्थिति आउला ।

**मासफल पौष:** महीनामा ५ सोमवार तथा सूर्यसंक्रान्ति पनि सोमवार परेको छ । पौषकृष्ण/पौषशुक्ल **पुस** महीनामा पर्दछ । सोमवासरीय संक्रान्तिले मनुष्य जगतलाई सुख शान्ति र प्रगतिदायी बनाउला । ५ सोमले खाद्यान्नको बजार भाउ नियन्त्रणमा लिन सक्षमता देखाउला ।

नेताहरूमा आपसी मनमुटावले राष्ट्रिय राजनीति अनुकूल बन्न नसक्ला । प्रशासनिक कार्यमा पनि हानि कै प्रवलता देखिएला । दैवी विपति र सवारी दुर्घटनाको प्रवलता क्षणिक रुपमा आउन सक्ला । तर जोश, जाँगरको वृद्धिले मन शान्त पार्ला । स्वास्थ्य विज्ञानको प्रगतिले रोगव्याधका प्रकोप नियन्त्रिणमा आउला । धार्मिक गतिविधिले प्रश्रय पाउला । पापीय मनोभावको सुधारले मानसिक शान्ति बढ्ला । तर सामाजिक कुसंगतिले हतोत्साहित बनाउला । शैक्षिक जगत सुधारले युक्त रहला । शत्रुहरू निस्क्रय होलान । अनावश्यक खर्च नियन्त्रित बन्ला । व्यापार-व्यवसायबाट समुन्नति होला । कृषिजन्यकार्य र पशु-पंक्षिपालनबाट प्रगतिमार्ग विस्तार्ला ।

केही खाद्यवस्तु, मूल्यवान्धातु, गुलिया/नुनिलावस्तु, मसाला र औषधिजन्य पदार्थमा महंगी बढ्ला । सुती, रेशमी वस्त्र आदिको भाउ तथा सुगन्धितवस्तु, मूल्यवान्धातु, कन्दमूल, प्रमुख खाद्यवस्तु आदिको भाउ अकासिएला ।

महीनाको केही दिन हिमपातले कहि कतै पीडा, मध्यतिर सामान्य झरीको प्रवलता रहें पनि अन्य बेला घमाइलो रहला । अन्यत्रको दिशामा सुखद वातावरण देखिए पनि उत्तरी भेगतिर अलि अशुभ समय आउन सक्ला ।

**मासफल माघ:** महीनामा ५ मङ्गल र बुधवार सूर्यसंक्रान्ति पनि मङ्गलवार परेको छ। माघकृष्ण/शुक्लपक्ष **माघ** महीनामा पर्दछ। भौमवासरीय संक्रान्तिले राष्ट्रलाई सफल नै बनाए पनि भयपूर्ण वातावरण निम्तिन सक्छ। ५ बुधले रसवस्तुको उचित उत्पादन गराउँला।

जोश, जाँगरको वृद्धिले मनमा सन्तोष गर्ला। नेताहरूको आपसी सद्भाव बढ्नाले राष्ट्रिय राजनीति अनुकूल बन्ला। प्रशासनिक कार्यमा पनि सफलतै हासिल होला। अध्यापक र अध्ययनकर्ता बीच प्रयाप्त समन्वय हुदा शैक्षिक जगत उपलब्धी मूलक बन्ला। रोगब्याध प्रकोप नियन्त्रित हुनाले स्वास्थ्य विज्ञानमा प्रगति थपएिला। सामाजिक कुरीति हटदै जाला। दैवीय लगायत सवारी दुर्घटनाका विपति घट्दै जाला। कृषिजन्यकार्य र पशु-पंक्षिको व्यावसाय सन्तोषप्रद बन्न नसक्ला।

अन्याय अत्याचार जस्ता पापीय मनोवृति बढ्दै जाला। धार्मिक गतिविधिले समाजलाई खासै फाइदा पुग्न नसक्ला। व्यापार-व्यावसाय त्यति सन्तोषप्रद बन्न नसक्ला। जग्गा जमिनबाट पनि आर्थिकता सुधार्नमा मुस्किलै पर्ला। आवश्यकीय खाद्यान्नहरू, बहुमूल्यधातु तथा औषधिजन्यपदार्थ लगायतमा महंगी बढ्ला। अनावश्यक खर्च नियन्त्रणमा आउन नसक्दा आर्थिक स्थिति धेरै बलियो नबन्ला। खाद्यवस्तु, बहुमूल्य धातु र औषधिजन्य पदार्थमा महंगी बढ्ला। सुती, रेशमी वस्त्र आदिको भाउ घट्नसक्ला।

महीनाको अन्त्यतिर सामान्य झरीको संभाब्यता रहें पनि अन्य बेला भने घमाइलो वातावरण देखिएला। अन्यन्त्र भन्दा उत्तरभेग तिर अलि सुखद पार्ला।

**मासफल फाल्गुन:** महीनामा ५ वृहस्पति तथा सूर्यसंक्रान्ति पनि विहीवार परेको छ। फाल्गुनकृष्ण/शुक्लपक्ष **फागुन** महीनामा पर्दछ। गुरुवासरीय संक्रान्तिले उचित अन्नोपादनबाट बजार भाउ नियन्त्रित बनाउला। ५ विहीले अन्नपात लगायत खाद्यान्नहरुको बजार भाउ नियन्त्रणमा ल्याउला।

आर्थिक स्वतन्त्रताले सबै ब्यवस्थित बन्दै जालान। कृषिजन्यकार्य र पशु-पंक्षिपालन व्यावसाय लगायत जग्गा-जमिनको कारोवारले पनि फाइदै गराउला। व्यापार व्यावसायबाट आयस्रोत वृद्धिको संभावनालाई नकार्न सकिदैन। सामाजिक कुरीति हटदै जाला। सवारी दुर्घटना लगायतका दैवी विपतिहरूमा न्यूनताको आभाष पाइएला। स्वास्थ्य विज्ञानको प्रगतिले रोगब्याध नियन्त्रिणमा आउला। सामाजिक विसंगतिहरू सौम्य प्रवृतिका होलान। पापीय भावनाले विश्राम लिदै जानाले धार्मिक गतिविधिको ब्यापकताले समाज प्रफूल्लित बनाउला।

प्रशासनिक कार्यबाट असन्तोष छाउला। राजनैतिक नेताहरूको मिलिजुली प्रवृतिले राज्य संचालनमा संक्षमता प्रर्दशन गर्लान। शिक्षाको क्षेत्रमा सुखद परिस्थिति आउन नसक्ला। ब्यर्थको खर्च घटाउन सकिदैन। दैनिक उपभोग्य वस्तुको भाउ मध्यम होला। अन्य रसवस्तु, बहुमूल्य धातु/रत्न, औषधिजन्यपदार्थ, सुतीवस्त्र लगायत खाद्यान्नमा पनि महंगीकै प्रधानता देखिएला।

महीनाको प्राम्भतिर मौसम बिग्रीएर ठण्डी वायुको दर्शन न होला भन्ने छैन। विहान बेलुकी चिसो मौसम र मध्यान्नतिर घमाइलो वातावरणले युक्त मेघबादलदर्शन सहित महीनाको अन्त्यमा झरीको संभाब्यता रहला। प्रायश: दक्षिणतिर अशुभ होला।

**मासफल चैत्र:** महीनामा ५ शुक्र, शनि र आइतवार तथा सूर्यसंक्रान्ति पनि शुक्रवार परेको छ। फाल्गुनशुक्ल र चैत्रकृष्ण/चैत्रशुक्लपक्ष **चैत** महीनामा पर्दछ। भृगुवासरीय संक्रान्तिले उचित अन्नोपादनबाट बजार भाउ नियन्त्रित बनाउला। ५शुक्रले धान्यवस्तु सुलभ गराउला। ५ शनिले दैनिक उपभोग्य आवश्यकीय वस्तुहरूमा महंगी नियन्त्रणमा ल्याउला। ५ आइतले रोगब्याधको प्रकोप बढाउला।

राजनैतिकनेतृत्वले राष्ट्रिय राजनीतिमा सुव्यवस्था कायम हुनमा अनेकौं बाधाहरू तेर्सिएलान। तर विकास निर्माणका योजनाहरू पुरा होलान आंशिक रुपमा। व्यापार-व्यवसाय, कृषिकार्य र पशु-पंक्षिपालनले आर्थिकतामा प्रशस्तै सुधारात्मक स्थिति आउला भन्ने छैन। पापीय भावनामा धार्मिकताको बृद्धिले समाज संस्कारित होला। शत्रुहरू परास्त होलान। दैवीदुर्घटनाका विपतिहरू घट्ला। उत्श्रृंखलतत्वलाई परास्तगर्ने क्षमताको वृद्धिले सामाजिक कुसंस्कार सुधिएला। शैक्षिक जगतमा सुधारात्मक अवस्था देखिएला। स्वास्थ्य विज्ञानको प्रगतिले रोगब्याधका प्रकोप नियन्त्रिणमा आउनाले सर्वत्र खुशीयाली छाउला।

केही खाद्यवस्तु, मूल्यवान् धातु, गुलियावस्तु, मसालाजन्य तथा औषधिजन्य पदार्थमा महंगी बढ्ला। सुती, रेशमी बस्त्रको भाउमा सामान्य घट्बढ् भइरहला।

विहान बेलुकी चिसो मौसम र मध्यान्हतिर घमाइलो वातावरणले युक्त यस महीनाको मध्यतिर मेघ दर्शन सहित झरीको प्रवलता। पूर्व-पश्चिम सुखद परिस्थिति देखिए पनि उत्तरी र दक्षिणी भेगतिर आपसी तनावले अशान्ति छाउला।

## अथ: संवत्सर फलम्

स जयति सिन्धूर वदनो देवोयत् पादपङ्कज स्मरणं ॥ वासरमणि रिवत मसां राशिन्नाशयति विघ्नानां ॥ अचिन्त्याव्यक्त-रूपाय निर्गुणाय गुणात्मने ॥ समस्त जगदाधार मूर्त्तये ब्रम्हणे नम: ॥ य: श्रृणोति मधुशुक्लपक्षतौ वर्षनाथ सचिवादिजं फलं ॥ प्राप्नुयाद् दुरित मुक्त विग्रहश्चार्यर्थमतुलं यश: सुखं ॥ अत्र: हि षष्ठचब्दानांमध्ये वार्हस्पत्यमानेन पिंगलनामक: संवत्सरो गत: कालयुक्तनामक: संवत्सर: प्राप्त: ॥ मेषार्कात्प्राग्भुक्त मासादय: ०।२५।२१।३६ भोग्यमासादय: ११।४।३८।२४ अत: परं सिद्धार्थी-नामक: संवत्सरो भविष्यति ॥

**अथ संवत्सर: फलम्**

वत्सरेकाल युक्ताख्ये सुखिन: सर्वजन्तव: ।
सतीत्यो पिसस्यानि प्रचुराणि तथा गदा ॥
सिद्धार्थवत्सरे भूपा: शान्तवैरास्तथा तथा प्रजा: ।
सकला बसुधाभाति बहुससस्यार्द्ध वृष्टय: ॥

**अथ गुरोरस्तोदय फलम्**

स्यात्पीडा कार्तिके वर्षे बहिंगोरथ जीविनाम् ।
शस्त्राग्नि क्षुद्भयंवृद्धि: पुण्यकौसुभं जीविनाम् ॥

**अथ राजा: भौमस्तस्य फलम्** (चैत्रशुक्ल १)

अग्नितस्कर रोगा: स्यूर्नृपाविग्रहदायका: ।
हत:सस्य जला भौमे वर्षेशे भृशदुखिता: ॥

**अथ मन्त्री: शनिस्तस्य फलम्** (मेषेऽर्क)

मन्दफलानि निखिलधरा न वारिञ्चन्तिवारिधरा: ।
दिनकर तनये सचिवे प्रभयारितं जगत्सर्वम् ॥

**अथ धान्येश:चन्द्रस्तस्य फलम्** (धनुष्यर्क)

चन्द्रे धान्यश्वरे धान्यंसुलभं जायतेखिलम् ।
द्विजगो कुलवृद्धि च राजानो मुदिता ॥

**अथ मेघेश:शनितस्य फलम्** (आर्द्रामा सूर्य प्रवेश)

शनौ मेघादि नाथेस्यात् वात्यामण्डलविभ्रम: ।
क्वचिद्वृष्टि: क्वचिद्क्षेम सस्यनाश: प्रजायते ॥

**अथ रसेशोगुरुस्तस्य फलम्** (तुलायामर्क)

रसनाथे दिविजगुरौ चन्दन कर्पूर कन्द शुलभानि ।
रसान्यखिलान्यं न्यतुलं सीदन्ती कुम्कुमादिनी ॥

**अथ सस्येशोभौमस्तस्य फलम्** (कर्कटेऽर्क)

सीदन्तिसस्य निचया भौमे सस्यपे किलोध्नभयात् ।
अपराखिल धान्यभयं क्वचित्क्वचिद् शस्त्रभयम् ॥

**अथ नीरसेशोभौमस्तस्य फलम्** (मकरेऽर्क)

नीरसेशो यदा भौम: प्रवालरक्तवाससां ।
रक्तचन्दनताम्राणां अर्धवृद्धिर्दिनेदिने ॥

**अथ फलेश:शुक्रस्तस्य फलम्** (मीनेऽर्क)

फलस्य पतौ भृगुजेधरा मृदुकुमार महीरुहराशाय: ।
बहुफलानरनाथ: सुभोगदाद्विजवरा: श्रुतिपाठपरायणा: ॥

**अथ धनेशोभौमस्तस्य फलम्** (कन्यायामर्क)

असममौल्य करोधरणीसुत: शरदितापकरस्तुषधान्यहृत् ।
सहसिमासिभवे द्विगुणंतदा नरपतिर्जन शोकविधायक: ॥

**अथ दुर्गेश:शनिस्तस्य फलम्** (सिंहेऽर्क)

रविसुते गढपालिनीविग्रहे सकलदेश गताश्चलिताजना: ॥
विविधवैरिविशेषित नागरा: कृषिधनं शलभैर्मुषितंभुवि ॥

**अथ आर्द्राप्रवेशतिथ्यादि** (आ.कृ.१) प्रतिपदा शुभदोरवि: ॥

**अथ वार शनिस्तस्यफलम्** मन्देमन्द फलंभवेत् ॥

**अथ नक्षत्रस्य** (**मूले**) मूले सवृभयावहरितिफलम् ॥

**अथ योगस्य** (**शुक्ल**) शुभशुक्लौ वृष्टिकरौ ॥

**अथ बेला फलम्** (**दिवा**) दिवाद्रा सस्य नाशाय: ॥

**अथ नवमेघानाम्** (**वरुण**) वरुणेत्वकर्षणवाकारमितिफलम् ॥

**अथ चतुर्मेघेशनाम्** (**आवर्त**) आवर्ते क्षिन्नवृष्टिस्यादितिफलम् ॥

**अथ द्वादशनागाना** (**पृथुश्रवा**) पृथुश्चवे जलंस्वल्पं सस्यहानि: प्रजायते ॥

**अथ अष्टनागेश:** **कुलिर:** ॥

**अथ सप्तवातप:** **आवह:** ॥

**अथ रोहिणीचक्रम्** (**सन्धौपतति**) गिरीसन्धौ खण्डवृष्टिरितिफलं ॥

**अथ जलाढकसंख्या:** ९६, समुद्रे:४८ , पर्वते २८.८, भूमौ १९.२, वर्षादीना विंशोपका: वर्षा:५, धान्यं ११, तृणं ५, शीतं १३, तेज:१७, वायु:१३, वृद्धि:१५, क्षय:१५, विग्रह:११, क्षुधा:३, तृषा:९, निन्द्रा:१५, आलस्यं १५, उद्यमं १३, शान्ति:१५, क्रोध:१३, दम्भ:५, लोभ:३, मैथुनं १५, रसनिष्पत्ति:९, फलनिष्पत्ति:१३, उत्साह:११, उग्रं १५, पापं १७, पुण्यं ७, व्याधि:७, तन्नाश:५, आचार:५, अनाचार:११, मृत्यु:९, जन्म:१, देशोपद्रव:७, तन्नाश:१३, चौरभी:३, तन्नाश:१३, अग्निभी:११, तन्नाश:१५, उद्भिजा:३, जरायुजा:३, अण्डजा:३, स्वेदेजा:३, शलभा:१३, मूषका:१७, शुका:१५, हेमं १९, ताम्रं ७, स्वचक्रं ९, परचक्रं १५ इतिसंक्षिप्तवर्षाफलम्



## मेष:

चु चे चो ला लि लु ले लो अ

ARIES

**मेष:** मेष राशि हुनेहरूका लागि यो वर्ष शुभ फलदायी रहेको छ। धनस्थानको बृहस्पतिले धनार्जनका स्रोतहरू प्राप्त गराउने, शत्रु पराजय हुने र स्त्रीसुख प्राप्तिको योग पनि बनेको छ। राहु र केतु भने प्रतिकूल रहेकाले स्थानहानि र खर्च बढ्न सक्ला। विरोधीहरू सक्रीय देखिन सक्छन्। राहु र केतुको जपशान्ति, नाग र भैरवको पूजा आदि गर्नाले अरिष्ट नाश होला। लाभको शनि अनुकूल नै रहेकाले मिहिनेतबाट कार्यक्षेत्र, व्यवसाय आदिमा भने लाभ नै गराउला। स्वभावमा कठोरता देखिए तापनि वर्षको उत्तरार्धतिर उन्नतिको योग रहेको छ। वैदेशिक रोजगार पनि फलदायी रहने छ। धर्मकर्मप्रतिको सद्भावमा सुधार आउला। कृषिजन्य कार्य तथा व्यापारव्यावसायले समृद्ध नै बनाउला। वैदेशिक रोजगारले जीवन यापनमा सुधार गर्ला। व्यर्थको व्ययभार नियन्त्रणमा ल्याउन गाह्रो पर्ला। स्वास्थ्यसुधार हुने, दैवी विपत्ति तथा सवारी दुर्घटनामा कमी आउने संकेत देखिन्छ। आर्थिक दृष्टिले असार, असोज, माघ र फागुन महिना शुभ रहेका छन् भने अरु महिना सामान्य नै रहेका छन्।

(स्वामी: मङ्गल, रत्न: मुगा, शुभरंग: रातो)



## वृष:

इ उ ए ओ वा वि वु वे वो

TAURUS

**वृष:** वृष राशि हुनेहरूका लागि यो वर्ष जन्मराशिमा बृहस्पति भएकाले धन, बुद्धि र स्थानहानि गराउला। विरोधिहरू बढ्लान्। शनि र राहु अनुकूल नहुनाले शरीरपीडा, आफन्तजनको वियोग, वाहनपीडा र नोकरी, राजनीति या कार्यक्षेत्रबाट हानि व्यहोर्नु पर्ने समय रहेकाले होसियारी अपनाउनु पर्नेछ। मन अस्थिर रहनाले विद्या र कीर्तिमा अभाव हुन जाला। राहु र केतु मिश्रित फलकारक बनेकाले वर्षको उत्तरार्धतिर व्यवसाय क्षेत्र राम्रै रहने देखिन्छ। तथापि बृहस्पति, शनि र राहुको शान्ति, विष्णु, दुर्गा र भैरवपूजा गर्नाले कर्मक्षेत्र अझ सबल बन्न सक्ला।

मनले आँटेको कार्यमा सफल बन्ने संकेत देखिन्छ। नोकरीबाट सुखद परिस्थितिको आगमन होला। व्यापार व्यवसाय, खेतीकिसानी, जग्गाजमिन र पशु-पंक्षिपालनको कार्यले अर्थतन्त्र सुधार्न मद्दत पुर्याउला। वैदेशिक रोजगारीले जीवनस्तर उकास्न सहज होला। धर्मकर्मप्रतिको सद्भावमा सुधार आउला। आर्थिक दृष्टिले साउन, कार्तिक, फागुन र चैत शुभ रहेका छन् भने अरु महिना सामान्य नै रहेका छन्।

(स्वामी: शुक्र, रत्न: हीरा, शुभरंग: सेतो)



## मिथुन:

क कि कु घ ङ(ग) छ के को ह

GEMINI

**मिथुन:** मिथुन राशिका लागि यस वर्ष राहु अनुकूल रहे पनि बृहस्पति, शनि र केतु भने प्रतिकूल रनहनाले अपव्यय, पापाशक्ति बढाउला। स्त्री र सन्तान सुखमा कमी ल्याउला। आफन्तसँग वैरभाव पैदा हुनसक्ला। बृहस्पति, शनि र केतुको जपशान्ति, विष्णु, देवी र शिवपूजा गर्नाले शुभफल मिल्नेछ। सफल यात्राको योग रहेको छ।

व्यापार व्यवसायले समुन्नति विस्तार गर्ला र कृषिजन्यकार्यले पनि उन्नति नै गर्ला। आमा-बाबुको शुभेच्छा, सन्तानको सद्भाव कायमै रहला। पति-पत्नीवीचको सुमधुरताले दाम्पत्य जीवन सुखद् होला। बौद्धिकताको प्रबलताले पढाई लेखाई सहित परीक्षा प्रतियोगिताहरू सफलै होलान। धर्मकर्मप्रतिको आस्थाले नैतिवान् बनाउला। वैदेशिक रोजगारीले जीवनस्तर सुधार्ला। सवारी दुर्घटना तथा दैवी विपत्तिमा न्यूनताको आभाष होला। शत्रुहरू निर्वल हुँदै जालान्। राजनैतिक गतिविधि र नोकरीबाट सम्मानित हुने अवसर आउला। मनले आँटेको कार्यमा सफल बन्ने संकेत देखिन्छ। अर्थका दृष्टिले बैशाख, भदौ, मङ्सिर र चैत शुभ रहेका छन् भने अरु महिना सामान्य नै रहेका छन्।

(स्वामी: बुध, रत्न: पन्ना, शुभरंग: हरियो)

## कर्कट:

हि हु हे हो डा डि डु डे डो

CANCER

कर्कट: कर्कट राशि हुनेहरूका लागि यो वर्ष बृहस्पति अनुकूल रहेकाले विद्या र कार्यक्षेत्रमा लाभ, आरोग्यता साथै स्थानलाभ गराउला। पुरानो धनराशि प्राप्त हुनसक्छ। कर्कट राशिलाई यो वर्ष शनिको अढैया दशाले भने सामान्य फलदायी बनाएको छ। जन्मकुण्डलीमा शनि शुभ भएमा यसको फल पनि शुभ नै रहने छ। शनि, राहु र केतु प्रतिकूल रहेकाले संयमित भएर यात्रा र कार्य गर्नु पर्ला। रोगादि पीडाले सताउन सक्ला। शत्रुबुद्धि रहनाले मितव्ययिता अपनाउनु पर्ला। पापकर्माशक्ति बढ्नाले कार्यक्षेत्रमा झैझमेला खेप्नु पर्ला। उपर्युक्त प्रतिकूल ग्रहको जपशान्ति, दुर्गा र भैरवपूजा गर्नाले शुभ होला। वर्षको उत्तरार्धमा केही सहज हुनेछ। संक्रामक रोगव्याधको प्रकोप नियन्त्रणले स्वास्थ्यसमस्यामा प्रगति देखिएला। राजनैतिक गतिविधि र नोकरीबाट सम्मानित हुने अवसर आउला। व्यापार व्यवसायले आर्थिक पक्षमा वृद्धि गर्ला। वैदेशिक रोजगारले जीवन यापनमा सहजता ल्याउला। कृषिजन्यकार्य तथा जग्गा-जमिनबाट अर्थतन्त्र मजबुत बन्ला। धार्मिक आस्थाले तीर्थाटनको अवसर जुट्दै जाला। आर्थिक दृष्टिले वैशाख, जेठ, असोज र पुस महिना शुभ रहेका छन्।

(स्वामी: चन्द्रमा, रत्न: मोती, शुभरंग: सेतो)

## सिंह:

मा मि मु मे मो टा टि टु टे

LEO

सिंह: सिंह राशिका लागि यो वर्ष सामान्य फलदायी रहेको छ। बृहस्पति, शनि र राहु अनुकूल नहुनाले यात्रा हुने, पापकर्ममा मन जाने, आफन्तजनबाट छुट्नुपर्ने जस्ता पीडा र रोगभयले सताउन सक्लान्। बृहस्पति, शनि र राहु शान्ति गरेमा उक्त अशुभ फलमा कमी आउनेछ। उत्तरार्धतिर भने आदेश गरेका वा आँटेका कामहरू पूरा हुनेछन्। खानपीनमा ध्यान दिनु पर्ला। बौद्धिक उर्वरताले पढाई-लेखाई, परीक्षा-प्रतियोगिताहरू सफलै होलान्। संक्रामक रोगव्याधको प्रकोप नियन्त्रणमा स्वास्थ्य विज्ञान सफल होला। नोकरीमा ख्याति बढ्नाले समाजमा रवाफ झल्केला। कृषिजन्य कार्य, पशु-पंक्षिपालन र वैदेशिक रोजगारले जीवन यापनमा सुखद् वातावरण बनाउला। सन्तानबाट प्रयाप्त सुख-शान्ति छाउला। आँटेका कार्यको अवरुद्धताले गाह्रो पर्ला। व्यापार-व्यावसायले आर्थिक सन्तुलनमा कठिनाइ उत्पन्न गराउला। सवारी दुर्घटना लगायत दैवीय विपत्तिको संभावना देखिन्छ। व्यर्थको खर्च नियन्त्रणमा दक्षताको अभिवृद्धि होला। पापकार्य नियन्त्रणमा आउलान्। धार्मिक गतिविधिले अनेकौं तीर्थाटनको अवसरहरू जुट्लान्। आर्थिक दृष्टिले जेठ, असार, कार्तिक र माघ शुभ रहेका छन्।

(स्वामी: चन्द्रमा, रत्न: मोती, शुभरंग: सेतो)

## कन्या:

टो पा पी पू ष(ड) ण ठ पे पो

VIRGO

कन्या: कन्या राशि हुनेहरूका लागि यो वर्षमा भाग्यस्थानको बृहस्पतिले मानसम्मान, कार्यसिद्धि, सन्तानलाभ, भूमिलाभ आदि शुभ फल प्राप्त गराउने योग छ। यो वर्षमा शनि शुभ रहे तापनि राहु र केतु प्रतिकूल रहेकाले मिश्रितफलको आधिपत्य रहने छ। रोगले सताउने, बन्धनमा पर्ने आदि जस्ता घटनाले मनमा क्लेश उत्पन्न गराउला। शुभ शनिले न्यायिक पक्ष बलियो भएर शत्रुपराजय भए तापनि आफन्तसितको वैरभाव भने कायमै रहला। राहु र केतुको शान्ति, शिव र भैरवपूजा गरे शुभफल मिल्नेछ। वाणीको प्रभाव बढ्ला। आँटेका कार्यले मूर्तरुप धारण गर्ला। आमा-बाबु र दाजुभाइ दिदी-बहिनीको सम्बन्ध सुमधुरता छाउला। बौद्धिकताको उर्वरताले गर्दा विद्याका कार्यहरु सफलै होलान्। व्यापार-व्यवसाय, कृषिजन्यकार्य, पशु-पंक्षिपालनले जीवन सन्तुलित बनाउला। वैदेशिक रोजगारले जीवन यापनमा सहजता आउला। नोकरीमा ख्याति बढ्ला। सवारी दुर्घटना लगायत दैवीय विपत्तिको संभावनमा कमि आउला। अर्थका दृष्टिले असार, साउन; मङ्सिर र फागुन महिना शुभ रहेका छन्।

(स्वामी: बुध, रत्न: पन्ना, शुभरंग: हरियो)

